

फो.नं. ४-२६१४३६
फ्याक्स नं. ४-२६२२३८
टेकु,पचली,काठमाण्डौं

नेपाल सरकार
स्वास्थ्य तथा जनसंख्या मन्त्रालय
# स्वास्थ्य सेवा विभाग
(कर्मचारी प्रशासन शाखा)

पत्र संख्या.०७७ /०७८
च.न. २२१६

मिति:२०७७/१२/२२

श्री रुक्सना कपाली
कार्यकारी निर्देशक,
क्वयेर युथ ग्रुप

**विषय: जानकारी सम्बन्धमा**

प्रस्तुत सम्बन्धमा तहाको च.नं. ०३६/७७/७५ मिति २०७७/१२/१७ को पत्रबाट माग भए बमोजिम पारलैङ्गिक व्यक्तिहरु (Transgender persons) द्वारा गरिने बिभिन्न प्रकारका Gender affirming surgeries सम्बन्धी नेपालको कुनै कानुनमा उल्लेख रहेको नरहेको, कुनै प्रावधान भएको नभएको वा कुनै ऐन कानुनले बाधा पार्ने गरेको वा नगरेको बिषयमा यस बिभागको सम्बन्धित समिति, महाशाखा एवं शाखा तथा कानुनबाट समेत जानकारी माग गर्दा हालसम्म मानव शरिरको अंग प्रत्यारोपण (नियमित तथा निषेध) ऐन २०५५ र नियमावली २०७३ बाहेक अन्य कानुनी व्यबस्था नरहेको व्यहोरा जानकारीका लागि अनुरोध छ ।

(महेश पाण्डे)
सुचना अधिकारी





ཀྭ་ཡེར་ཡུཐ་གྲུཔ **क्वयर युथ ग्रुप** क्वयेर युथ ग्रुप

Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२


सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

**नेपाल संवत् ११४१ चिल्ला ३**
**२०७७ फागुन ७ गते**




श्री सूचना अधिकारीज्यू,
स्वास्थ्य सेवा विभाग,
टेकु, यैँ (काठमाडौँ)।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे।**

महोदय,

उपरोक्त सम्बन्धमा हामीले पारलैङ्गिक व्यक्तिहरू (Transgender persons) द्वारा गरिने विभिन्न प्रकारका Gender affirming surgeries हरू सम्बन्धी नेपालको कुनै कानूनमा उल्लेख रहेको नरहेको, कुनै प्रावधान भएको नभएको वा कुन ऐन कानूनले बाधा पार्ने गरेको वा नगरेको विषयमा स्वास्थ्य मन्त्रालयमा सूचना माग गर्यौं। सोही सम्बन्धमा स्वास्थ्य तथा जनसंख्या मन्त्रालयले यस व्यहोराको सूचना यहाँ स्वास्थ्य सेवा विभागबाट लिन भनि अनुरोध गरेको हुनाले उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना यस संस्थाको अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछौँ।

**यस पत्र सँग संलग्न –**

१) स्वास्थ्य तथा जनसंख्या मन्त्रालयमा हामीले सूचना माग गरेको पत्र – प.सं. १

२) उक्त सूचना यस कार्यालयसँग सम्बन्धित रहेको भन्ने स्वास्थ्य तथा जनसंख्या मन्त्रालयको पत्र - प.सं. १

रुक्शना कपाली,
कार्यकारी निर्देशक, क्वयेर युथ ग्रुप


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup